एँ, एम. आर. गराएँ तर पनि रोगको कुनै थाहा लागेन । त्यसपछि फेरि हाड-जोर्नी विशेषज्ञ डा. लखनलाल साह सित टिंचिंग अस्पताल, महाराजगंज, काठमाण्डौं, र डा. रामकेवल साह सँग नेपाल मेडिकल कलेज, जोरपाटी, काठमाण्डौंमा उपचार गराएँ । कुनैपनि डाक्टरले न त रोग पत्ता लगाए न त रोग निदान गर्न सके । म साह्रै हताष भएँ । एउटा प्रोजेक्टमा काम गर्दै थिएँ । त्यो पनि बिरामीका कारण छुट्यो, पैसा पनि मनग्गे खर्च भयो । म आर्थिक र मानसिक रूपमा पूरै विछिप्त भइसकेको थिएँ । झार-फुक गराएँ र देवी-देवता लाग्यो कि भनेर पनि देखाएँ तैपनि कुनै लाभ हात लागेन । त्यसैबेला पारिवारिक कलहले गर्दा सबै दाजु-भाइ छुट्टी-भिन्दो भए । चारै तिरबाट दुःखै दुःख आइलाग्यो । त्यसपछि मैले सोचेँ कि अब भगवान्ले नै यो रोग ठीक गर्न सक्छन्, डाक्टर वा झारफुक, ओखतीबाट ठीक हुनवाला छैन । मसंग एउटा श्रीमद्भगवत गीताको पुस्तक थियो । ओशोको पुस्तक पनि थियो । ती पुस्तकहरू अध्ययन गर्न थालेँ । मेरो दशा देखेर मेरो परिवार, मित्र, गाउँ समाजका सबै मानिसहरू धेरै दुःखित थिए । त्यसैबेला गाउँको एक भक्त ललन कर्णले ज्ञान गंगा किताबमा लेखिएको भगवानको अद्‌भूत चमत्कारहरूको कहानी सुनायो र केहि कुराहरू सम्झाउँदै ज्ञान गंगा पुस्तक पढ्नका लागि दियो । ज्ञान गंगा पुस्तक पूरै पढेपछि सबै कुराले मेरो हृदयलाई आशावादी बनाइ दियो । सतलोक आश्रम बरवाला हरियाणामा जनको लागि र पूज्य गुरूदेव सित नाम उपदेश लिनको लागि मेरो मन ब्याकुल भयो । फेरि म एक पटक काठमाण्डौं गएँ । त्यहाँको धार्मिक पुस्तक पसल रत्न पुस्तक भण्डार माइतीघरबाट ज्ञान गंगा पुस्तक रू. ५० मा खरिद गरें । फेरि दोस्रो पटक ज्ञान गंगा र श्रीमद्‌भगवत गीता सँगसँगै पढें अनि मलाई पक्का विश्वास भयो कि ज्ञान गंगामा लेखिएको सबै कुरा सत्य हुन् । स्वयं विश्वस्त भएँ शास्त्र अनुकूल साधनाबाट नै प्रभुको प्राप्ति हुन सक्छ । त्यो साधना प्रदान गर्ने औकात यस पृथ्वीमा मात्र पूज्य गुरूदेव संत रामपालजी महाराजलाई नै छ । अब मलाई पूरा विश्वास भयो कि कबीर साहेव नै भगवान हो, बाँकी सबै कालका साधनासम्म हुन् ।

त्यसपछि मैले योग, मेडिटेशन पनि गर्न छाडें । त्यहाँबाट म र भक्त ललन दास दुवैले सतलोक आश्रम बरवाला, हिसार, हरियाणामा फोन गर्‍यौं र यथासक्य छिटो पूज्य गुरूदेव रामपालजी महाराजबाट नाम उपदेश लिन प्रस्थान गर्‍यौ । म ६ मार्च, २०११ मा नाम उपदेश प्राप्त गरी पूर्ण विश्वासका साथ भक्ति गर्दैछु । नामदान लिएर भक्ति गर्नाले मेरो सम्पूर्ण दुःखकष्ट नाश हुन गयो र आज म पूर्णरूपेण स्वस्थ छु । म एम. ए. पास गरी नोकरीको लागि भौंतारीइ रहेको थिएँ । नाम दान लिए पछि गुरूजीको कृपाले मलाई गाउँकै कलेजमा सरकारी नोकरी पनि मिल्यो । यी सबै सतगुरू रामपालजी महाराजको असीम कृपाले भएको हो । अतः अन्य भक्ति मार्गमा लागेका भक्तजनसित अनुरोध छ कि परमेश्वर कबीर साहेवको भक्ति सद्‌गुरू रामपालजी महाराज सित नाम उपदेश लिएर गर्‍यो भने जन्म-मरण रूपी भंयकर रोगबाट मुक्ति प्राप्त हुन्छ र सांसारिक सुख सम्पति र दुःखको स्वतः नाश हुन जान्छ ।

जय बन्दीछोड की !

सत साहेब !
भक्त ब्रजकिशोर (विजय)
पुत्र-श्री विल्टु साह
गाउँ - करून्याही
जिल्ला - सिराहा
गा. वि. स. - कल्याणपुर, नेपाल ।